# पात्रो हेर्ने तरीका

भवनाथ दाहाल

## आवश्यकता

नेपाली पात्रोमा नेपालमा चल्ति भैरहेका विभिन्न सम्वत् दिएका हुन्छन् । पात्रोहरुका लेखन विधि पनि थरी थरीका छन् । पात्रो बनाउने र त्यसको उपयोग गर्नेले बाहेक धेरै मान्छेहरुलाई पात्रोमा लेखिएका कुराले के भन्न खोजेको हो खुल्ने कुनै सामान्य पठनीय विषय पाइदैंन । त्यसमा लेखिएको कुरा आकाशीय पिण्डसङ्ग सम्बन्धित हो की, धार्मिक महत्वको हो की सांस्कृतिक खालको हो की, समाजको हितका लागि ऐतिहासिक विषय हो कतै खुलाएको पाइन्न । जान्न खोज्नेले या त ज्योतिष पढ्नु पर्दछ या हात खाली रहन्छ । ज्योतिष पढ्नेले पनि नयाँ पात्रो बनाउने गणना मात्र सिक्दछ, पात्रोभित्रका विषय सिक्दैन । सामान्य रुपमा पात्रो हेर्न सक्नेले त तिथी, पञ्चक, भद्रा र आफ्ना चाडपर्वको दिन बाहेक अरु कुरा बुझ्न पनि सक्दैन । सामान्य जनमानसले जान्न नसकेकाले पात्रोमा रहेका सूचनाको जुन गहनता थियो र छ, त्यो घटेर गैरहेको छ ।

उदाहरणका लागि बुद्ध जयन्तीलाई अघि सार्न सकिन्छ । हामीलाई सिकाइए अनुसार बौद्ध धर्मका प्रवर्तक गौतम बुद्धको जन्म बैसाख पूर्णिमामा भएको हो । नेपाली पात्रोमा त्यसकारण बैसाख पूर्णिमामा 'गौतम बुद्ध जयन्ती' लेखिएको पनि हुन्छ । काशीबाट प्रकाशित पात्रोहरुमा 'बुद्ध जयन्ती' वा 'बुद्ध पूर्णिमा' लेखिएको पाइन्छ । हिन्दुहरुका अवतारमध्ये नवौं अवतार बौद्धावतार हो । यो नवौं अवतारको जन्म चाँही आश्विन शुल्क दशमी अर्थात विजया दशमीको दिनमा भएको मानि हरेक पात्राहरुमा विजया दशमीको दिनलाई 'बौद्धावतार' लेखिएको हुन्छ । विद्यालयका कक्षा पढेकाले नवौं अवतारको जन्म बैसाख पूर्णिमा सम्झने भए, वास्तवमा त्यो सही होइन । मुल कुरा नै नबुझेकाले यसमा खोजीपस्ने कोही हुने पनि

भएनन् । यति थाहा पाए पछि बल्ल हाम्रो प्रश्न सिर्जना हुन्छ - नवौं अवतारका बुद्धको वास्तविक जन्म दिन चाँही कुन हो त? नेपालमा बुद्ध जयन्ति बैखासमा पर्छ भनेर थाहा भएको असी वर्ष जति भयो होला । नत्र बुद्ध अवतारको दिन विजया दशमी एक्लै नै थियो ।

पात्रोमा दिइने कानुन दिवसले ६० वर्ष अगाडिको र भैरब भद्रकाली जात्राले झण्डै साढे छ सय (ने. सं. ५००) वर्ष, पाहाँचह्रे (पशुपति उत्पति) पन्ध्र सय वर्ष वा त्योभन्दा पनि पूरानो इतिहास कायम राखेको हुन्छ । पात्रोले पाँच सय जति नेपाली जात्रा र पर्वको इतिहास बताउँछ । यसमा ससानो खोजले नेपालको मौलिक इतिहासको ठूलो ग्रन्थ हरेक जातजाति र संस्कृतिका नेपालीको हातमा पुऱ्याउँदछ । इतिहासको वास्तविक चित्रण र सजिवता दर्शाउने शिक्षा र गौरवको परिचयमा सबैलाई उत्प्रेरित गर्न तथा समग्र शैक्षिक स्तर उँचो राख्ने ससाना कुराको संग्रह गरेकाले यसको ज्ञान सामान्य भन्दा सामान्य मान्छेमा पुऱ्याउनु अत्यावश्यक छ ।

हुन त यी पङ्तीका लेखक ज्योतिष वा पात्रोमा रहेका विषयमा उचित ज्ञान भएको वा विज्ञ व्यक्ति होइन, अनाडि हो अज्ञानी हो । तर पनि आफूलाई थाहा भएका विषय जति अरुले पनि जानेमा नेपाली पात्रोले जुन ऐतिहासिकता बोकेको छ त्यसको केही अंशको शिक्षा विस्तार हुन सक्ला भनि यो पात्रो हेर्न सिक्ने तरीकाको प्रकासन श्रेणी तयार गरिएको हो । पात्रो हेर्न सिकाइयो र यसमा भएका ऐतिहासिक र सांस्कृतिक कुराको विषय सूचिसम्म बनाउन सकियो भने ती ऐतिहासिक कुरा वा सांस्कृतिक कुराका स्वामित्वधारीले विस्तृत प्रकाश पारिदेलान वा विषय सूचिको आधार ग्रन्थ बनाइदेलान भनि यो संग्रह र प्रकाशन श्रेणी तयार गरिएको हो । आशा छ, यसमा विज्ञता हुनेले सामान्य जनबोलीमा अप्ठेरा कुरा सिकाउने गरी नयाँ स्वरुपको प्रकाशन गर्नु हुनेछ ।

भवनाथ दाहाल

२०७८ बैसाख १

विषय सूचि

पहिलो भागः अग्रखण्डका कुरा....१
संवत्....१
पञ्चाङ्गको मूख्य आधार — सृष्टितो गताब्दाः....६
बार....८
राजा मन्त्री र मन्त्रीपरिषद्....१०
दोश्रो भागः शिरभागका कुरा....१३
पक्ष....१३
विश्वघस्र पक्ष....१४
ऋतु....१४
अयन....१४
नवग्रह....१४
तेश्रो भागः अधिक र क्षयका कुरा....१६
अधिक महिना क्षय महिना....१६
अधिक तिथी क्षय तिथी....१७
क्षय वर्ष....१८
चौथो भागः तिथिका कुरा....२०
सूर्योदय....२०
तिथी....२१
करण....२२
एकादशीका नाम....२३
पाँचौं भागः नक्षत्रका कुरा....२४
नक्षत्र अवधारणा....२४
नक्षत्रका पाउ....२५
अभिजित नक्षत्र....२५

**पञ्चाङ्गको अङ्ग** ........ २५
**होडा चक्र** ........ २६
**गण्डमूल र गण्डान्त नक्षत्र** ........ २६
**राशि** ........ २७
**संक्रान्ति** ........ २७
**छैटौं भागः पुराणका कुरा** ........ २९
**युगादी** ........ २९
**मन्वादी** ........ ३०
**सातौं भागः सजीव इतिहासका कुरा (१)** ........ ३१
तिथीमा आधारित पर्व ........ ३१
सौरमासमा आधारित पर्व ........ ३२

# पात्रो हेर्ने तरीका

## पहिलो भागः अग्रखण्डका कुरा

### संवत्

नेपाली पात्रोमा विभिन्न सम्वत् दिएका हुन्छन् । तिनका नाम र अर्थ यो अङ्कमा बताइन्छ ।

१. विक्रम सम्बत्

नेपाली पात्रो विक्रम सम्वत् अनुसार प्रकाशन गर्ने हुनाले मूख्य सम्वत् नै यही देखिन्छ । नेपाल पञ्चाङ्ग निर्णायक समितिको स्वीकृतीमा विक्रम सम्वत् अनुसारका पात्रो प्रकाशन हुन्छ ।

यो संवत् निरयण पद्दति अनुसार सूर्य मेष राशीमा सरेका दिनदेखि शुरु हुन्छ । यसको अर्थ बैसाख संक्रान्ति देखि नयाँ वर्ष लाग्दछ । तर केही गणनामा भने चैत्र शुक्ल प्रतिपदादेखि नै नयाँ वर्ष लागेको मानिएको पनि हुन्छ ।

निरयण पद्दति भनेको आकासमा सूर्यको वास्तविक स्थान जे भए पनि गणितीय आधारमा सूर्यको स्थान तया गरिने तरीका हो । निरयण पद्दतिमा चन्द्रको अवस्थिति भने वास्तविक दृष्यमा आधारित (सायन) हुन्छ ।

मेष राशी भनेको आकासमा सूर्य देखिने वृताकार बाटो (सूर्य कक्ष वा सूर्य कक्षा भनिने तर देख्दा वृताकार मानिने) लाई बाह्र भाग लगाउँदा आउने पहिलो भागको ३० डिग्रिको स्थान हो । मेष राशीमा सूर्य रहुञ्जेल बैसाख महिना हुन्छ ।

उदाहरणका लागि विक्रम सम्वत् २०७८ मा गणितीय आधारमा सूर्य बुधवारको विहान सूर्योदय हुनु अगावैको ५ बजेर १ मिनेटमा शुन्य डिग्रीमा देखा पर्दछ र २०७८ सालको बैसाख शुरु हुन्छ ।

मल्लकालका केही ऐतिहासिक कागजातमा विक्रम सम्वत्को नयाँ वर्ष कार्तिक शुक्ल प्रतिपदा (गोरुतिहारका दिन) पनि भएको पाइन्छ । दक्षिण भारततिर चाँही अहिले पनि विक्रम सम्वत्को नयाँ वर्ष कार्तिक शुक्ल प्रतिपदा (गोरुतिहारका दिन) नै हुन्छ । पञ्चाङ्गका सामान्य पाठक बाहेकका अध्ययनकर्ताले यतातिर ध्यान पुऱ्याउनु पर्दछ ।

२. शालिवाहनीय शाके, शक सम्वत् वा शकाब्द १९४३

नेपाली पात्रोमा परम्परागत शालिवाहन शाके दिने गरिएको छ । यो चैत्र शुल्क प्रतिपदाका दिन परिवर्तन हुन्छ । यो सम्वत् परिवर्तन भइ नयाँ सम्वत् लाग्ने दिनलाई पञ्चाङ्गमा वत्सारम्भ भनिएको हुन्छ । विक्रम सम्वत् १३५ मा यो सम्वत् शुरु भएकाले विक्रम सम्वत् र यसको फरकता १३५ वर्ष हुन्छ । चिना टिपन, लगन लेख्दा यो सम्वत् बढी प्रयोग गरिन्छ । भारतीय राष्ट्रिय सम्वत् पनि शक सम्वत् हो तर त्यो सुधारिएको सम्वत् भएकाले नेपालको शक सम्वत् परम्परागत भनिएको हो ।

सम्वतहरु लेख्दा अब्द शव्दको प्रयोग पनि गरिन्छ । अब्द भनेको वर्ष वा सम्वत् नै हो । त्यसैले शकाब्द शव्दले शक सम्वत् वा शक वर्ष जनाउँछ ।

ऐतिहासिक सामग्रीहरुमा शक वा शकाब्दको अर्थ अवस्था अनुसार जुनसुकै सम्वत् पनि हुन सक्दछ । त्यसैले ऐतिहासिक कागजात, शिलालेख, ताम्रपत्रहरु पढ्दा शक वा शकाब्द शब्दको वास्तविक अर्थ आजभोली चलेको शालिवाहन शक नहुन सक्दछ । अर्कोतिर पुराना ऐतिहासिक सामग्रीमा शक सम्वत्को शुरुवात सूर्य उत्तरायणका दिन वा कार्तिक शुक्ल प्रतिपदा (गोरुतिहारका दिन) पनि भएको पाइन्छ । अध्ययनकर्ताले यी कुरामा चनाखो रहनु पर्दछ ।

अर्को कुरा शक सम्वत् चैत्र शुक्ल प्रतिपदाका दिन नयाँ वर्ष शुरु हुने हुनाले सौरमानको विक्रम सम्वतको शुरुवातभन्दा सामान्यतयाः अगावै वर्ष परिवर्तन हुन्छ । उदाहरणका लागि शाके १९४३ को नयाँ वर्ष २०७७ साल चैत्र ३१ मा परेको छ ।

३. नेपाल संवत् ११४१ –११४२

यो सम्वत् कार्तिक शुक्ल प्रतिपदा (गोरुतिहारका दिन) नयाँ वर्ष पर्दछ र चान्द्र पद्दतिमा चल्दछ । चान्द्र पद्दति भनेको शुक्ल पक्षको प्रतिपदादेखि अर्को महिनाको कृष्ण पक्षको औंशीसम्मको महिना हो, अमान्तमान अनुसार। पूर्णिमान्त पद्दतिमा चाँही पूर्णिमाको भोलिपल्टदेखि शुरु भएको महिना अर्को पूर्णिमाको अन्तमा समाप्त हुन्छ । यस पद्दतिमा सूर्य पद्दती अनुसारका महिना त हुन्छन् तर त्यति महत्वको हुदैन ।

पूर्णिमान्त पद्दतिको चलन भएकाले नेपाली चान्द्र महिनामा कृष्ण पक्ष पहिला र शुक्ल पक्ष पछि पर्दछ । तर वर्ष परिवर्तन भने त्यो महिनाको दोश्रो पक्ष अर्थात शुक्ल पक्षमा हुन्छ ।

विक्रम सम्वत् ९३७ को कार्तिक शुक्ल प्रतिपदा (गोरुतिहारका दिन) देखि शंखधरले ऋणमोचन गरी राघवदेवका पालामा यो सम्वत् शुरुभएको मानिएको छ । नयाँ र बलशाली राजाले विजय उत्सवमा नयाँ सम्वत् चलाइ धाक लगाउने परम्परा भएकोमा एक सामान्य व्यक्तिले यो सम्वत् चलाएकाले भारत वर्षीय सम्वत्हरुमा यस सम्वत्लाई बेग्लै महत्व दिने गरिएको छ ।

४. सृष्टितो गताब्दाः १९५५८८५१२२

यो सूर्य सिद्धान्तमा बताए अनुसार सृष्टिदेखि बितेका वर्षको सम्वत् हो। सम्पूर्ण सम्वत् र पञ्चाङ्गको गणना यही आधारमा गरिएको हुन्छ । यस आधारले भन्दा सम्पूर्ण हिन्दु पञ्चाङ्गका लागि यो आधार सम्वत् हो ।पूराणको शैलीमा यो सम्वत्को व्याख्या गरिएको छ, त्यसको संक्षिप्त सार तल पञ्चाङ्गको मूख्य आधार– सृष्टितो गताब्दाः खण्डमा सविस्तार व्याख्या गरिन्छ ।

५. कलेर्गताब्दाः /कलेब्दा ५१२२

सूर्य सिद्धान्तमा आधारित भएकाले नेपाली (भारतीय र बङ्गालीमा पनि) कलि सम्वत् दिएको हुन्छ । गणनाको मूख्य उपआधार पनि यही सम्वत् हो। कलि लागे पछि २०७८ सालको वत्सारम्भका दिन ५११२ वर्ष बिते भन्ने तरीकाले बितेका वर्षको सम्वत् हो यो ।

किराँतहरुको येले सम्वत् र कली सम्वत् उही रहेको कुरा विगत केही दशकदेखि किराँत सांस्कृतिक विज्ञहरुले प्रचारमा ल्याएका छन्। यसो हो भने किराँत वर्ष, आकास भैरब, यलम्बर, बर्बरिक, महाभारत युद्ध, इन्द्रजात्रा, तथा ज्यापू, गुरुङ्ग, थारु, राई, लिम्बु, राजवंशी लगायत

कश्मिरदेखि नेपाल हुँदै म्यानमारको उत्तरी क्षेत्रसम्मको नृवंश र समाजशास्त्र एवं इतिहासको नयाँ सूत्र फेला पार्न सकिन्थ्यो । समाजलाई थप स्वामित्व प्रदान गर्दथ्यो ।

सृष्टतोगताब्द वा कलेर्गताब्दमा करोडौं वर्षको गणना देखाएता पनि महाभारतकाल (कथा अनुसार कली सम्वत् शुरु हुनुभन्दा ३६ वर्ष अगाडी) सम्म सूर्य सिद्धान्तको प्रचलन पनि थिएन । यी सम्वत पनि थिएनन् । थिएनन् भन्ने प्रमूख प्रमाण त स्वयं महाभारत युद्ध नै हो । किनकी महाभारत युद्ध इन्द्रप्रस्थ राज्यका लागि लडिएको थिएन । लडाईंको कारण त तेह्र वर्ष सकियो कि सकिएन भन्ने विवाद मात्र थियो ।

६. राक्षस नाम संवत्सर ४९

नेपाली पञ्चाङ्गमा दिइने अर्को अनौठो सम्वत् सम्वत्सर हो । यो वृहस्पति वर्ष सम्वत् हो । यो वर्षचक्रमा ६० वर्ष हुन्छन् । यसको नाम वर्षैपिच्छे परिवर्तन गरिएको हुन्छ । ऐतिहासिक कालमा यसको व्यवहारिक महत्व भए पनि अहिले यो संकल्प पढ्दा बाहेक खास व्यवहारमा प्रयोग गरिएको देखिँदैन । वृहस्पति वर्ष ३६० दिनभन्दा केही बढीको हुन्छ । त्यसकारण कहिलेकाँही यो सम्वत्सर दुई वत्सारम्भका बीचमा शुरु भइ अन्त भैसक्दछ र क्षय हुन्छ । २०७७ सालमा रहेको प्रमादी नाम गरेको सम्वत्सर पछि आनन्द नाम गरेको सम्वत्सर हुनु पर्नेमा २०७८ को वत्सारम्भमा राक्षस नाम गरेको सम्वत्सर परेकाले आनन्द नाम गरेको सम्वत्सर क्षय भएको छ । राक्षस नाम गरेको वृहस्पति वर्ष ६० मध्येको ४९ औं वर्ष भएकाले यसलाई ४९ भनिएको हो ।

आजभोली सम्वत्सरको अर्थ वृहस्पति वर्ष भएता पनि पुराना कुरा पढ्दा यसको अर्थ पञ्चवर्षीय युग पनि हुन्छ भन्ने कुरा अध्ययनकर्ताले ध्यान पुऱ्याउनु पर्दछ ।

७. इसवीय सन्

नेपाली पञ्चाङ्गमा पोप ग्रेगोरी तेह्रौंद्वारा सच्याए पछिको कमन इरालाई इसवीय सन् भनि दिने गरिएको छ । यो सम्वत् जनवरी महिनादेखि परिवर्तन हुन्छ ।२०७८ सालका लागि इसवीय सन् २०२१ / २०२२ हुन्छ । बेलाइतीहरुले सन् १८५३ मा ग्रेगोरी पद्दति अपनाउनु अघिसम्मका सन्दर्भमा भने जुलिएन सम्वत् लागु भएकाले पुराना साहित्यका अध्ययनकर्ताले ध्यान पुऱ्याउनु पर्दछ ।

**अन्य सम्वत्**

पञ्चाङ्गका अग्रखण्डमा नदिएका तर भित्र दिएका अन्य सम्वत पनि नेपाली पात्रोमा राखिएका हुन्छन् । कल्पब्दाः १,९७,२९,४९,१२२ चाँही विगतका पात्रोमा दिने गरिएता पनि हालका पात्रोमा देखाएको पाइन्न ।

कल्पब्दा भनेको पृथ्वी आकास तारा लगायत निर्माण शुरुभए पछिको अवधी हो । यो सम्वत् विगतमा दिने गरेता पनि हाल दिने गरेको पाइदैन । यसको विस्तृत व्याख्या पञ्चाङ्गको मूख्य आधार सृष्टितो गताब्दाः खण्डमा गरिएको छ ।

नेपालमा चल्ति भए पनि पात्रोमा नदिएका सम्वत् पनि रहेका छन् । हिजरी सम्वत् १४४३/१४४४ यसको उदाहरण हो । नेपालका इश्लाम धर्मावलम्विहरुले आफ्ना चाडपर्व हिजरी सम्वत् अनुसार मनाउने गर्दछन् । चान्द्र पद्दती (केही दिन त दृष्य पद्दती) मा चल्ने यो सम्वत् मूलधारका पात्रोमा कहिले कसैले देखाउने कहिले नदेखाउने गरिएको छ । सांस्कृतिक रुपमा सानो संख्यामा प्रचलनमा रहेको बङ्गला सम्बत्, सिख सम्वत् पनि पात्रोमा देखाउने गरेको छैन ।

विगतमा नेपालको राजकीय प्रयोगमा रहेको र हाल जनकपुरमा चल्तिमा रहेको लक्ष्मण सम्वत् पनि नेपाली पात्रोमा देखाएको पाइदैन । मैथली समाजमा सांस्कृतिक महत्व भएको मिथिला सम्वत् (१४२९) पनि पात्रोमा देखाउने गरेको छैन । त्यस्तै विगतमा राजकीय मान पाएको लिच्छवी सम्वत् वा  मानदेव सम्वत् (१४४५) पनि पात्रोमा देखाइदैन । गौतम बुद्धका हजुरवुबा अञ्जनले देवदहमा चलाएको भनिएको अञ्जन सम्वत् (२७१२) बारे पनि सुनिन्छ तर पात्रोमा यसलाई देखाउने गरेको छैन ।

पाली, बर्मिज, खमेर, थाइ, सिंहला, लाओमा बुद्ध सम्वत्को प्रचलन भएता पनि बुद्धको जन्मभूमिको गौरवान्वित भूमिमा बुद्ध सम्वत् (२५९६) पनि वास्ता नगरिएको सम्वत् हो ।

पात्रोमा तिब्बती पात्रोमा आधारित नयाँ वर्ष तमू ल्होसार, सोनाम ल्होसारको नाम दिने गरेता पनि ती सम्वत् कति पुराना हुन भन्ने गरिएको छैन ।

## पञ्चाङ्गको मूख्य आधार– सृष्टितो गताब्दाः

पञ्चाङ्गको मूख्य आधार सृष्टिदेखि बितेका वर्षको सम्वत् हो भनि माथि भनि सकिएको छ। यो आधार सूर्य सिद्धान्तमा बताए अनुसारको हो। नेपाल, भारत र बङ्गलादेशका पञ्चाङ्ग केही सुधार गरिएको सूर्य सिद्धान्तका आधारमा बनाइन्छन्।

विहान सूर्य पूर्वमा उदाए देखि दोश्रो पटक सूर्य उदाएसम्मको अवधि सावन दिन वा अहोरात्र हो। सूर्य उदयको यो गणना गर्दा अर्धसूर्योदयबाट अर्को अर्धसूर्योदयसम्म गरिन्छ। मानवीय कार्यमा यो अहोरात्रलाई दिन भन्ने गरिएको छ।

उत्तरी ध्रुवमा बस्नेहरुका लागि भने सामान्य मानिसका आधा वर्षमा पहिलो चोटी सूर्य उदय भए पछि छ महिनासम्म सूर्य आकासमा नै घुमिरहन्छ। एक पटक अस्ताए पछि छ महिना पछि मात्र उदाउँदछ। उत्तरी ध्रुबबाट हेर्दा पहिलो अर्धसूर्यको उदयदेखि दोश्रो अर्धसूर्यको उदयसम्म (वास्तविक एक वर्ष) को अवधिलाई दिव्य दिन भनिन्छ। यो देवता र असुरहरुको अहोरात्र हो। यो अवधी भनेको तपाईं हाम्रा लागि चैत्र ७ गते देखि अर्को चैत्र ७ गतेतिरको अवधि पर्न जान्छ। वास्तविक वर्ष भएता पनि केवल अहोरात्र भएकाले यसलाई सूर्य सिद्धान्तमा दिब्य दिन भनिएको छ। दिब्य दिनको गणना पछिः

३६० दिब्य दिनको १ दिव्य वर्ष हुन्छ –हाम्रो ३६० वर्ष।

१२००० दिब्य वर्षको १ महायुग हुन्छ –हाम्रो ४३,२०,००० वर्ष।

७१ महायुगको १ मन्वन्तर (मनुको काल) हुन्छ र अर्को मनुको कार्यकाल शुरु हुन ४८०० दिव्य वर्ष लाग्दछ – त्यसकारण एक मनुकाल हाम्रो ३०,८४,४८,००० वर्ष।

पृथ्वी आकास ग्रह ताराको निर्माण शुरु भए पछि मनु काल शुरु हुन ४८०० दिव्य वर्ष लाग्यो। त्यस पछि हालसम्म ६ वटा मनु काल समाप्त भइ सकेको छ र सातौं मनुको पनि २७ महायुग समाप्त भैसकेको छ। अट्ठाइसौं महायुगको सत्य, त्रेता र द्वापर समाप्त भइ अहिले कलियुग चलि रहेको छ। त्यसैले सृष्टिदेखि वर्तमान कलियुगको शुरुवातसम्मका वर्ष संख्या निम्नानुसार वर्ष हुन्छः

| | सामान्य वर्ष | दिव्य वर्ष |
|---|---|---|

| | | |
|---|---|---|
| शुरु सन्धी वर्ष | १,७२८,००० | ४,८०० |
| ६ मनुको वर्ष | १,८५०,६८८,००० | ५,१४०,८०० |
| २७ महायुग वर्ष | ११६,६४०,००० | ३२४,००० |
| यस महायुगका सत्य युगका वर्ष | १,७२८,००० | ४,८०० |
| यस महायुगका त्रेताका वर्ष | १२९६००० | ३,६०० |
| यस महायुगका द्वापरका वर्ष | ८६४,००० | २,४०० |
| यस महायुगका कलिका वर्ष | ५,१२२ | १४ |
| कल्प वर्ष (कल्पाब्द) | १,९७२,९४९,१२२ | ५,४८०,४१४ |
| निर्माण अवधि | १७,०६४,००० | ४७,४०० |
| सृष्टि वर्ष (सृष्टितोगताब्द) | १,९५५,८८५,१२२ | ५,४३३,०१४ |

यस गणना अनुसार पृथ्वी आकास ग्रह ताराको निर्माण शुरु भए पछि मनु काल शुरु हुन ४८०० दिव्य वर्ष लाग्यो। तर निर्माणको क्रम भने जारी रहेको थियो। त्यो निर्माण क्रम निरन्तर ४७,४०० दिव्य वर्ष (१,७०,६४,००० वर्ष ) चलिरह्यो। त्यसकारणले निर्माण शुरु कल्पाब्द १,९७,२९,४९,१२२ वर्ष अगाडी यो ब्रम्हाण्ड निर्माण हुन शुरु भएको थियो। निर्माण क्रमको अन्तिम दिन पृथ्वीबाट देखिँदा (geocentric) सबै ग्रह, सूर्य, चन्द्रमा तथा तिनीहरुका कक्षहरुको मिलनविन्दु, अर्धवृताकार कक्षको सबैभन्दा नजिकको भाग आकासको शुन्य डिग्रीमा रहेको थियो तर ताराहरु चाँही जो जहाँ देखिन्छन् त्यही थिए।

निर्माण अवधीको अन्तिम दिन आइतबार चैत्र शुक्ल प्रतिपदाको दिन मेष संक्रान्तिको मध्यरात्रीको समय पारी (पहिलो मध्यरात्री) सबै ग्रहरु पश्चिमतिर चल्न शुरु भए, राहू चाँही पूर्वतिर। यो समय विन्दुलाई पञ्चाङ्गमा सृष्टि मानिएको छ। यो समय विन्दुदेखि २०७८ साल बैसाखको संक्रान्तिसम्म १ अरब ९५ करोड ५८ लाख ८५ हजार १२२ वर्ष पूरा भएको छ। यसैलाई सृष्टितोगताब्द (सृष्टिदेखिका वर्ष) भनिन्छ। निर्माणदेखिका वर्षलाई चाहीँ कल्पाब्द (कल्पको शुरुदेखिका वर्ष) भनिन्छ जुन १,९७,२९,४९,१२२ वर्ष भएको छ। केही वर्ष पहिलासम्म यो कलाब्दः सम्वत् पनि नेपाली पात्रोमा दिने गरेको थियो अहिले निरन्तरतामा देखिँदैन।

हाम्रा सम्वत्‌हरुमा चैत्र शुक्ल प्रतिपदा, आइतबार र बैसाखलाई शुरु विन्दु मान्नुको खास आधार यही सृष्टिको पहिलो दिन हो । यी गणना, आधार, परिकल्पना, सिद्धान्त सबै पृथ्वीबाट जे देखिन्छ त्यसकै आधारमा (geocentric) छन् । त्यसकारण आकासमा वास्तवमा कसले कसलाई घुम्दछ भन्ने मतलब हुदैन । पृथ्वीबाट हेर्दा के देखिन्छ भन्ने मात्र मतलबको विषय हुन्छ ।

सूर्य सिद्धान्तमा सृष्टिको पहिलो दिनदेखि चल्न शुरु गरेका ग्रह, सूर्य, अर्धवृताकार कक्षको सबैभन्दा नजिकको विन्दु (मन्द विन्दु) वा सबैभन्दा टाढाको विन्दु (उच्च विन्दु) कति समयमा एक चक्कर लगाउँदछन् भन्ने खुलाएर लेखिएको छ । उदाहरणका लागि सूर्य कक्षको सबैभन्दा टाढाको विन्दु हाल ७८ डिग्रीमा रहेको छ । चैत्रको ७ गतेतिर सूर्य शुन्य डिग्रीमा हुन्छ र ७८ डिग्रिमा पुग्दा जेष्ठको २२ – २५ गते हुन्छ । त्यसकारणले जेष्ठको चौथो सातातिर सूर्य टाढा भएकाले सबैभन्दा सानो देखिन्छ, टाढाको गति पनि ढिलो हुने हुनाले जेष्ठ आसपासका महिना लामा हुन्छन् । यसको ठीक ६ महिना पछि सूर्य विम्ब नजिक भएकाले आकारमा ठूलो देखिनुका साथै महिनाका दिन चाँही छोटा हुन्छन् ।

## बार

पञ्चाङ्गको एउटा भाग बार हो । पञ्चाङ्गमा राखिएका बारको परिवर्तन चाँही सूर्योदयमा हुन्छ । वास्तवमै सूर्य सिद्धान्त अनुसार त बार परिवर्तन कुरुक्षेत्र भएर जाने देशान्तरमा सूर्योदय भए पछि हुनु पर्दछ ।

बार सात वटा हुन्छन् । कुन दिन कुन बार हुन्छ भन्न हिन्दु पञ्चाङ्गमा अनौठो नियम रहेको छ ।

एक दिनमा चौबीस होरा हुन्छन् । ती चौबीस होराका मालिक सातवटा आकासीय पिण्ड (दृष्य ग्रह) हुन्छन् । यिनीहरुको क्रम चाँही पृथ्वीबाट देखिने टाढाको दूरीको क्रम अर्थात शनी, बृहस्पति, मङ्गल, सूर्य, शुक्र, बुध*, र चन्द्र हुन्छ ।

* सूर्य सिद्धान्त लगायतका भारतवर्षका सम्वतको आधार पृथ्वी केन्द्रित (geocentric) सिद्धान्त रहेको र दृष्य ग्रहको गति अनुसार तिनीहरु पृथ्वीबाट कति टाढा छन् गणना गरिने हुनाले बुध ग्रहलाई नजिक र शुक्र ग्रहलाई बुधभन्दा टाढा मानिएको हुन्छ ।




पञ्चाङ्गको मूख्य आधार - सृष्टितोगताब्दामा व्याख्या गरिएको अनुसार सृष्टिको पहिलो दिन बैसाख १ गते चैत्र शुक्ल प्रतिपदा तिथी आइतबार थियो।सृष्टिको चलायमानको शुरुवात मध्यरात्रीमा भएता पनि त्यो पहिलो दिनको सूर्योदयमा आइतबार पर्ने नै भयो। सूर्योदयमा आइतबार रहेकाले सूर्योदयका समयको होराको मालिक पनि सूर्य नै हुने भयो। पहिलो दिनलाई २४ होरामा विभाजित गर्दा पहिलो, आठौं, पन्ध्रौं र बाइसौं होराको मालिक सूर्य नै भयो। तेइसौं होराको मालिक शुक्र, चौबीसौं होराको मालिक बुध र पच्चीसौं होराको मालिक चन्द्र पर्न जान्छ। सृष्टि शुरु भएको आइतबारको सूर्योदयदेखि पच्चीसौं होरा दोश्रो सूर्योदयको समयमा पर्न जाने हुनाले आइतबार पछि सोमबार हुन्छ। सोमबारको पनि पच्चीसौं होराको मालिक मङ्गल हुन पुग्दछ। पच्चीसौं होरा अर्को दिनको सूर्योदयमा पर्ने हुनाले तेश्रो दिन मङ्गलबार हुने भयो। एवं क्रमले सूर्योदयका बेलाको होराको मालिकको चौथो मालिक अर्को दिनको सूर्योदयको होराको मालिक हुने हुनाले मङ्गलबार पछि बुधबार, बुधबार पछि विहीबार, बिहिबार पछि शुक्रबार र शुक्रबार पछि शनीबार पर्दछ।

बारका नाममा आजकल सरलिकरण गरेर आइत सोम भनेता पनि अझतक कताकति आदित्यबार वा रविबार, चान्द्रबार, गुरुबार वा वृहस्पतिबार, शनिश्चरबार नाम चलेकै छन्।

सूर्योदयमा मात्र बार परिवर्तन गर्ने हुनाले एकाध अवस्थामा पञ्चाङ्गमा र जन व्यवहारमा पनि कहिलेकाँही असजिलो महशुस हुन्छ। जन्म, मृत्यु जस्ता व्यक्तिगत घटना वा खाससमयसङ्ग सम्बन्धित घटना दूर्घटना मध्यरात्री पछाडी भएमा घटना भएको गते वा बार भन्न यस्तो समस्या पर्दछ। यसको कारण चाँही पश्चिमी शिक्षा र स्थानीय संस्कृतीको मिश्रणले सिर्जना गरेको समस्या

हो । हामीले न पश्चिमी शिक्षा सिक्यौं न आफ्नो शिक्षा सिक्यौं, वास्तवमै अलपत्र परिरहेका छौं । दुवैतिरका शिक्षा पाएका त बढी जान्ने हुनुपर्ने हो तर हामी सामान्य अक्षर पढ्न सक्ने साक्षरभन्दा माथि पुग्न नसक्ने गरी अडकिएका छौं । बैसाख १२ गते शनिबार दिउसो भुइचालो गएकाले मात्रै हो त्यो भुईचालो १२ घण्टा पछि रातीको १२:५५ मा गएको भए त्यसको मिति र बार भन्न सक्ने नेपालीको संख्या हजारमा हुन्थ्यो । दिउसै भुइचालो गएको भएर करोडौंले भन्न सकेका हौं । यो हो हामीले व्यहोरेको वा व्यहोर्नु पर्ने व्यवहारिक असजिलो ।

पञ्चाङ्ग अध्ययन गर्दा पनि बार र गतेको यो समस्या कसरी समाधान गरिएको हुन्छ भनेर जान्नु पर्दछ । सूर्योदयमा बार परिवर्तन भएता पनि मध्यरात्रीभन्दा पछाडी पञ्चाङ्गका घटना परेमा केही घटना अघिल्लै दिन र केही घटना पछिल्लो दिन पर्न जान्छन् । यसका लागि घटना पिच्छेका नियम हुन्छन् । उदाहरणकालागि मध्यरात्री पछिको संक्रान्ति (सूर्य ३० डिग्रीले भाग जाने स्थानमा पुग्नुलाई संक्रान्ति भनिन्छ) भोलिपल्टको दिनलाई १ गते मानिन्छ, यसमा पनि केही ससाना अपवाद छन् पुण्यकालका । केही पर्वमा चाँही सूर्योदय नहेरेर अरुणोदय (पूर्वी आकासमा उज्यालो देखिनु) लाई पनि आधार लिइन्छ । कुन कुराको परिवर्तन कहिले मानिने भन्ने कुरा सम्बन्धित ठाउँमै बताउनु राम्रो होला ।

## राजा मन्त्री र मन्त्रीपरिषद्

नेपाली पञ्चाङ्गको अग्रखण्डमै राजा र मन्त्री दिने गरिएको छ, आकासीय पिण्डहरुको पनि राजतन्त्रात्मक मन्त्रीमण्डल भए जस्तो गरेर । पात्रोको बाह्य पृष्ठमा राजा एक जना र मन्त्री एक जना हुन्छन्, अरु कोही हुदैनन् । तर पात्रोको भित्र ग्रह परिषद् र विभिन्न क्षेत्रका मन्त्रीहरु दिएको हुन्छ । मन्त्रीपरिषद्को परिकल्पना गरिए पनि, पात्रोमा संसदको परिकल्पना छैन । चौतारिया भारदार छैनन् । त्यसहिसावले हेर्दा यो ग्रहपरिषद्को परिकल्पना राजाले एक्लै शासन नगरी मन्त्रीपरिषद्को सल्लाहमा शासन गर्ने प्रचलन शुरु भए पछि शुरु भए जस्तो देखिन्छ । यसमा राजा सहितका दश मन्त्री हुने हुनाले दशाधिकारी पनि भनिन्छ ।त्यसकारण पात्रोको यस खण्डको ऐतिहासिक र राजनैतिक महत्व छ ।

बैसाखदेखि सौरमानले नयाँ वर्ष मानिएता पनि र व्यवहारमा सौरमान बमोजिमका महिना र गते प्रचलनमा रहे पनि सम्वत् परिवर्तन भने चैत्र शुल्क प्रतिपदाको दिन मानेर पञ्चाङ्ग गणना गरिएको

हुन्छ । पञ्चाङ्ग लेख्दा चान्द्र मास पद्दतिमा लेखिन्छ । त्यसकारण पात्रोका हरेक पन्नामा चन्द्रमासका पक्ष र प्रतिपदादेखिका तिथी लेखिन्छन् ।

चैत्र शुक्ल पक्षको प्रतिपदाको सूर्योदयमा परेको बारको मालिक पञ्चाङ्गमा राजा मानिन्छ । सूर्य ० डिग्री (मेष रासी वा बैसाख) मा पुग्दाको बारको मालिक चाँही मन्त्री मानिन्छ । राजा र मन्त्रीमा त्यसकारणले वास्तविक आकाशीय पिण्ड सूर्य, चन्द्र, मङ्गल, बुध, बृहस्पति, शुक्र वा शनी मात्र हुन्छन् ।

प्रतिपदा तिथीको सूर्योदय वा शुन्य डिग्रीको समयमा परेको बार नै राजा र मन्त्री हुने हुनाले पञ्चाङ्गमा बार परिवर्तनको नियम पनि याद गर्नु पर्दछ । पञ्चाङ्गमा बार परिवर्तनको नियमका लागि बार खण्डमा विस्तृत व्याख्या गरिएको छ ।

सूर्योदयमा बार परिवर्तन भएता पनि मध्यरात्रीभन्दा पछाडी संक्रान्ति परेमा (सूर्य ० डिग्रीमा गएमा) भोलिपल्टको दिनलाई १ गते मानिन्छ । २०७८ सालको बैसाख संक्रान्ति चैत्र ३१ गते मंगलबार मध्यरात्री पछिको ५ घण्टा १ मिनेटमा भएको छ । बुधवारको सूर्योदय विहान ५ बजेर ४४ मिनेटमा हुन्छ । बार परिवर्तनको नियम अनुसार विहान ५:४४ अगाडी मङ्गलबार नै मानिने हुन्छ । तर मध्यरात्री पछाडी सूर्य ० डिग्रीमा गएकाले बैसाख १ गते चाँही बुधबार मानिन्छ ।यसको अर्थ गणितीय आधारमा (आकासको वास्तविक आधारलाई त सायन संक्रान्ति भनिन्छ जुन चैत्र ७ मै भैसकेको छ) सूर्य मंगलबार मेष रासी (बैसाख) मा प्रवेश भएको छ । सूर्य मेष रासी (बैसाख) मा प्रवेश गरेको बारको मालिक चाँही मन्त्री हुन्छ । त्यसकारण २०७८ सालको मन्त्री पनि मङ्गल नै हुने भयो ।

२०७८ सालको सम्वत् परिवर्तन २०७७ सालको चैत्र ३१ गते चैत्र शुक्ल प्रतिपदा मङ्गलबार भएकाले २०७८ सालको राजा मङ्गल हुन्छ ।

श्रावण संक्रान्ति परेको दिनको बार ग्रह चाँही चार महिनामा फल्ने अन्नसङ्ग सम्बन्धित कृषि मन्त्री (सस्येस) मानिन्छ । २०७८ श्रावण १ गते शुक्रबार परेको छ, त्यसकारण यो वर्षको सस्यश (कृषि मन्त्री) शुक्र हुन्छ ।

सूर्य आद्रा नक्षत्रमा पुगेका दिनको बार ग्रह मेघेस (जलश्रोत मन्त्री) हुन्छ । २०७८ आषाढ ८ गते मङ्गलवार सूर्य आद्रा मण्डलमा पुग्ने हुनाले जलश्रोत मन्त्री मङ्गल हुनेछन् । यो दिन मनसुन शुरु हुने दिनका सन्दर्भमा लिए जस्तो देखिन्छ ।

ग्रह परिषद्का अरु मन्त्रीको नामावली यस प्रकार छः धान्येस (अर्थमन्त्री), रसेश (दूध मह मन्त्री), निरसेश (खानी मन्त्री), फलेस (फलफूल मन्त्री), धनेस (वाणिज्य मन्त्री) र दुर्गेस (रक्षा मन्त्री) ।

# दोश्रो भागः शिरभागका कुरा

## पक्ष

नेपाली पात्रो पक्ष अनुसार दिएको हुन्छ। बैसाख १ गते पर्ने पक्षदेखि अर्को वर्षको बैसाख १ गते परेको पक्षसम्मको अवधी एक वर्षमा समावेश हुन्छ।

प्रत्येक पक्षका लागि बेग्लै पानामा छुट्याइन्छ। त्यो पक्ष परेको शाके, विक्रम सम्वत्, पक्षको नाम, नेवारी पक्षको नाम, नेपाल सम्वत, इसवीय सन् एवं महिना, ऋतु, अयन र वृहस्पति वर्ष प्रत्येक पानाको शिरभागमा खुलाएको हुन्छ। कुनै सम्वत्, महिना, अयन एकै पक्षमा एकभन्दा बढी भएमा शिरभागमै दुवै खुलाएर जुन दिन त्यस्तो परिवर्तन हुने हो सोही मितिको पञ्चाङ्गमा वास्तविक परिवर्तनको दिन दिएको हुन्छ।

ओंशीको लगत्तैको समय विन्दुदेखि पूर्णिमाको समाप्तिसम्मको अवधीलाई शुक्ल पक्ष भनिन्छ। यसमा १५ भाग हुन्छन् र प्रत्येकलाई तिथी भनिन्छ। पूर्णिमाको लगत्तैको समय विन्दुदेखि औंशीको समाप्तिसम्मको अवधिलाई कृष्ण पक्ष भनिन्छ। यसमा पनि पन्ध्र तिथी हुन्छन्। तिथीहरुलाई प्रतिपदा वा परेवा, द्वितिया, त्रितीया, चतुर्थी, पञ्चमी, षष्ठी, सप्तमी, अष्ठमी, नवमी, दशमी, एकादशी, द्वादसी, त्रयोदशी र चतुर्दशी यो चौथ तिथीहरुलाई क्रमसः १, २, ३, ४ ले जनाउँने गरिन्छ। शुक्ल पक्षको पन्ध्रौं तिथी पूर्णिमालाई चाँही १५ र कृष्ण पक्षको पन्ध्रौं तिथी औंशीलाई चाही ३० ले जनाउने गरिएको छ।

## विश्वघस्र पक्ष

कृष्ण पक्ष वा शुक्ल पक्ष जेसुकै भएता पनि कुनै पक्षमा १३ दिनमात्र भएमा वा त्यस पक्षमा १३ वटामात्र सूर्योदय भएमा त्यो पक्षलाई विश्वघस्र पक्ष भनिन्छ। महाभारत युद्ध अगाडि विश्वघस्र पक्षका दुवैतिर ग्रहण परेको कुरा महाभारतमा लेखिएकाले काल गणनामा यसको सहयोग लिइदै आएको छ। २०७८ सालको भाद्र शुक्ल विश्वघस्र पक्ष रहेको छ।

## ऋतु

ऋतु छ वटा हुन्छन् र सूर्यको आधारमा चल्दछन्। यस अर्थमा ऋतु सौरमानमा आधारित हुन्छ। चैत्र बैसाख वसन्त ऋतु। जेष्ठ आषाढ गृष्म ऋतु। श्रावण भाद्र वर्षा ऋतु। आश्विन कार्तिक शरद ऋतु। मंशिर पुस हेमन्त ऋतु। माघ फागुन शिशिर ऋतु हुन।

ऋतुका आधारमा मौसम चक्र चल्दछ। खेतिपातिका काम ऋतुका आधारमा हुन्छन्। कतिपय खेतीजन्य कार्यमा ऋतु वा महिनाका पनि तोकिएको गतेमै गर्ने चलन छ।

## अयन

अयन दुई वटा हुन्छन्, उत्तरायण र दक्षिणायन। अयन वास्तवमा सायन (दृष्य पद्दति) मा आधारित भएता पनि पात्रोमा चाँही निरयण (गणितीय) पद्दतिमा दिएको हुन्छ। यस अर्थमा ऋतु सौरमानमा आधारित हुन्छ। निरयण पद्दतिमा सूर्य माघ १ गतेदेखि उत्तरतिर लाग्ने हुनाले माघदेखि आषाढसम्म उत्तरायण र श्रावण १ गतेदेखि दक्षिणतिर लाग्ने मान्यता अनुसार श्रावणदेखि पुससम्म दक्षिणायन लेखिएको हुन्छ। सायन (दृष्य पद्दति) मा आधारित सूचना कतै दिने गरिएकोमा त्यो हटाए जस्तो देखिन्छ।

अयनका आधारमा दिन रातको लम्बाइ परिवर्तन हुन्छ। उत्तरायणमा दिन लामा हुदै जान्छन् भने दक्षिणायनमा दिन छोटा हुदै जान्छन्।

## नवग्रह

पात्रोमा र धर्म संस्कृतिमा पनि नवग्रह अर्थात नौ ग्रहका कुरा आउँछन्। तर वास्तवमा सात आकाशीय पिण्डमात्रै ग्रह हुन्। पृथ्वीबाट देखिने सात आकाशीय पिण्ड चन्द्रमा, बुध, शुक्र, सूर्य,

मङ्गल, वृहस्पति र शनीलाई सबै अर्थमा ग्रह मानिएको छ। सूर्य कक्ष र चन्द्र कक्षको अदृश्य रेखा पृथ्वीबाट हेर्दा परस्पर काटिने स्थानमध्ये पहिलो विन्दुलाई राहु र त्यसको ठीक उल्टोमा १८० डिग्रीमा हुने अर्को विन्दुलाई केतु भनिन्छ। यी सातवटा पिण्ड ग्रह र दुई अदृष्य विन्दुलाई बोलिचाली र धार्मिक सांस्कृतिक कार्यमा नवग्रह भनिन्छ। अदृष्य विन्दुहरुलाई ग्रह मानिने अवधारणा अनुसार त ज्योतिष गणनामा ३१ ग्रहगणित गर्नु पर्दछ।

ज्योतिष गणनामा राहु र केतु जस्ता बाइसवटा जति अदृश्य विन्दुहरुको गणना गरिएको हुन्छः

- सूर्य कक्षसङ्ग परस्पर काटिने चन्द कक्षका विन्दु उत्तर जाने राहु र दक्षिण जाने केतु (२)
- बुध र शुक्रको सूर्यसङ्गको दृष्य दूरी शिघ्रोच्च (२)
- मङ्गल, वृहस्पति, शनीको आधुनिक कक्ष शिघ्रोच्च (३)
- सातै ग्रहका कक्षको अण्डाकारमध्ये सबैभन्दा नजिकको विन्दु मन्दोच्च (७)
- सूर्य बाहेक छ ग्रहका मन्दोच्चको ठीक उल्टोमा पर्ने पात (६)
- स्थिर तारहरु नै चलायमान हुने अयन (२)

## तेश्रो भागः अधिक र क्षयका कुरा

सूर्योदय, संक्रान्ति, विषुवत जस्ता स्थिर विन्दुमा आधारित समयमा परिवर्तन हुने पञ्चाङ्गका अवयवहरु दुई विन्दुमै देखा परेमा त्यो अधिक गणना हुन्छ। यस्तोमा पहिलो बिन्दुमा भएको अवयव दोश्रो विन्दुमा पनि देखिने हुनाले दोहोरिन्छ र यस्तोलाई अधिक भनिन्छ। यसको ठीक उल्टो दुई विन्दुका बीचमै शुरु भइ अन्त भइसक्ने अवयव चाँही अघिल्लो र पछिल्लो दुवै पटक नदेखिने हुनाले क्षय भएको भनिन्छ। चान्द्र र सौर पद्दति हुनाले यसका महिना, तिथी, नक्षत्र, योग अधिक र क्षय दुवै हुन्छन् भने वृहस्पति वर्ष क्षय हुन सक्दछ।

### अधिक महिना क्षय महिना

एक संक्रान्तिदेखि शुरु भएर अर्को संक्रान्तिको ठीक अगाडिसम्मको समयवधिलाई महिना (सौरमास वा सौर महिना) भनिन्छ। शुक्ल पक्षको प्रतिपदादेखि औंशीको अन्तसम्मको अवधिलाई पनि महिना (चान्द्रमास) भनिन्छ।हरेक सौरमासमा नयाँ चान्द्रमास शुरु हुनु पर्दछ। यसरी हरेक चान्द्रमासले एउटा संक्रान्ति देख्दछ भने हरेक सौरमासले एउटा औंशी देख्दछ।

तर यो नियमका दुईवटा अपवाद पनि हुन्छन्।

हरेक तीन वर्ष जतिमा एउटा चान्द्रमास दुई संक्रान्तिका बीचमै शुरु भइ बीचमै सकिन्छ। अर्थात चान्द्रमासले संक्रान्ति देख्न पाउँदैन। यस्तो संक्रान्ति बेगरको चान्द्रमासलाई अधिक मास भन्ने गरिन्छ। धार्मिक सांस्कृतिक कार्यमा चाँही यसलाई पुरुषोत्तम मास भन्ने पनि चलन छ।

उन्नाइस वर्ष वा एक सय एकचालीस वर्षको चक्रमा अधिकमासको उल्टो अवस्था आइपर्दछ। त्यतिखेर कुनै सौरमास अर्को चान्द्रमास भित्र शुरु र अन्त भइ हराउँदछ। त्यो सौरमासले औंशी

देख्न पाउँदैन। औंशी नपर्ने सौरमासमा सौरमासको गणना नबिगारी चान्द्रमासको क्षय भएको मानिन्छ। क्षयमासको मिलान गर्न त्यसै वर्षमा नजिकै अर्को अधिकमास परेको हुन्छ। क्षयमास परेको वर्ष दुई पटक अधिक मास पनि पर्न सक्दछ।

त्यसकारण एउटै सौरमासमा दुईवटा औशीको समाप्ती भएमा अधिक मास र एउटै चान्द्रमासमा दुईवटा संक्रान्ति पर्न गएमा चान्द्रमासको क्षयमास हुन्छ। अधिकमास र क्षयमासलाई मलमास पनि भनिन्छ।

## अधिक तिथी क्षय तिथी

अधिक मास र क्षय मास जस्तै तिथीमा पनि दोहोरिने र हराउने घटना घट्दछ, अधिक तिथी वा क्षय तिथीको रुपमा। तिथीको यो उपक्रम चाँही दुई सूर्योदयबाट निर्धारण हुन्छ।

पहिलो सूर्योदय र लगत्तैको दोश्रो सूर्योदयका बखत एउटै तिथी भएमा त्यो तिथि दोहोरिन्छ र अधिक तिथी सिर्जना हुन्छ।

कुनै तिथिभित्र सूर्योदय नै नपरेको अवस्था चाँही फरक हुन्छ। यस्तोमा पहिलो सूर्योदयमा पहिलो तिथि हुन्छ भने दोश्रो सूर्योदयका बखत तेश्रो तिथि आइसकेकाले दोश्रो तिथी (सूर्योदयका सन्दर्भमा) टुट्दछ। यसरी सूर्योदय नभएको तिथीलाई क्षय तिथी भनिन्छ। पात्रोमा क्षय तिथिको अन्तिम समय विन्दु पहिलो तिथिको कोठामा तल्लापट्टी सानो अक्षरले लेखेको हुन्छ।सोही कोठाको माथिल्लो समय विन्दुले चाँही सूर्योदयकालको तिथिको समाप्तिको समय लेखिएको हुन्छ।

एकै पक्षमा दुई पटक क्षय तिथी परेको पक्षमा १३ दिनमात्र भएमा त्यस्तो पक्षलाई विश्वघस्र (विश्वघस्त्र) पक्ष भनिन्छ। दुईवटा क्षय तिथि परेर पनि अधिक तिथि थपिएमा भने विश्वघस्र मानिदैन।

तिथिमा जस्तै अधिक र क्षयको घटना नक्षत्र, योग र करणमा पनि घट्दछ र तिनीहरुको लेख्ने तरीका पनि तिथीको जस्तै हुन्छ।

## क्षय वर्ष

महिना, तिथि, नक्षत्र, योग, करण जस्तो वर्ष चाँही अधिक हुदैन । तर वृहस्पति वर्ष क्षय हुन्छ । २०७७ सालमा प्रमादी नाम गरेको वृहस्पति वर्ष थियो । त्यसपछि आनन्द नाम गरेको वृहस्पति वर्ष हुनु पर्नेमा त्यो वर्ष २०७७ सालभित्र शुरु भइ २०७७ सालभित्रै समाप्त भएकाले २०७८ सालमा राक्षस नाम गरेको सम्वत्सर कायम हुन गएको छ ।

# चौथो भागः तिथिका कुरा

## सूर्योदय

पञ्चाङ्गको प्रमूख आधार सूर्योदयको समय हो। पात्रोमा हरेक दिनको सूर्योदय दिएको हुन्छ। तर पात्रोमा दिने सूर्योदय पात्रो लेखिएको स्थानको हुन्छ। नेपालका लागि पात्रोमा काठमाण्डौको सूर्योदयको समय लेखिएको हुन्छ। काठमाण्डौको पूर्व पश्चिम देशान्तरमा पर्नेले देशान्तरको फरकता र उत्तरदक्षिण पर्नेले चरको फरकता मिलाएर आफ्नो ठाउँको सूर्योदय समय निकाल्नु पर्दछ।

भूमध्यरेखामा पर्ने स्थानमा सधैं सूर्योदय एकै समयमा हुन्छ र दिन रात पनि बराबर हुन्छ। भूमध्यरेखाबाट जति उत्तर वा दक्षिण गयो उती दिन रातको लम्बाइ फरक पर्न थाल्दछ र अहोरात्रको अवधी पनि एकनासको हुदैन। अक्षांश बढे अनुसार यो फरकता पनि बढ्दै जान्छ। अर्कोतिर सूर्य पनि भूमध्यरेखाबाट तेइस डिग्रीभन्दा केही बढीसम्म दक्षिण र उत्तर हिडिरहेको हुन्छ। भूमध्यरेखाबाट सूर्यको अवस्थिति रहेको अक्षांशलाई क्रान्ति भनिन्छ। आफ्नो अवस्थितिको अक्षांश र क्रान्तिको अक्षांशले गर्दा सूर्योदयको समय र दिन रातको अवधि निर्धारण हुन्छ। यी दुई कारणले पर्ने फरकतालाई चर भन्ने गरिएको छ। चरको फरकता मिलाउन पात्रोमा चर तालिका दिएको हुन्छ।

सुत्रबाट गणना गर्ने हो भने चैत्र ७ पछिका दिनबाट गणना गरी लगभग चर मिनेट निम्नानुसार हुन्छः

$K = sin^{-1} sin(days^{o}) \times sin(23.5^{0})$

चर मिनेट $= 10 \times sin^{-1} tan(L) \times tan(K)$

यो चर मिनेट चाँही स्थानीय समय हुने हुनाले पात्रो लेखिएको स्थान र आफ्नो स्थानको देशान्तरबाट पर्ने फरकता मिलाए हुन्छ ।

काठमाण्डौको देशान्तर ८६ डिग्रि १५ मिनेटबाट गणना गरिएकाले पूर्वकाले प्रति डिग्रि ४ मिनेटका दरले समायोजन गर्नु पर्दछ ।

## तिथी

शुक्ल पक्षका १५ र कृष्ण पक्षका १५ गरी ३० तिथि हुन्छन् । पृथ्वीबाट हेर्दा सूर्य र चन्द्र एकै स्थानमा बसेकाले तिनीहरुको अन्तर ० डिग्री भएका अवस्थामा औंशीको समाप्ति हुन्छ । त्यस पछि सूर्य र चन्द्रको फरक पृथ्वीबाट हेर्दा प्रत्येक १२ डिग्रीमा १ तिथि समाप्त हुन्छ । पात्रोमा तिथि समाप्तिको समय दिएको हुन्छ । तिथि समाप्ति भनेको प्रत्येक १२ डिग्रीको समाप्ति विन्दु हो । पृथ्वीबाट देख्दा सूर्य र चन्द्रको अन्तर १८० डिग्री भएमा पूर्णिमाको समाप्ती हुन्छ । त्यसकारण तिथि भनेको धार्मिक सास्कृतिक नभएर ज्यामितीय वर्गिकरण हो । ज्यामितीय वर्गिकरण अनुसार धार्मिक र सास्कृतिक सम्बन्धको विकास पछि भएको हो ।

सूर्योदयका समयमा जुन तिथि रहन्छ त्यो दिनका लागि त्यही तिथिले जनाउने बोलिने चलन छ । उदाहरणका लागि सूर्य चन्द्रको फरक १४० डिग्रि हुँदा बुधबारको सूर्योदय भएमा त्यो १२ औं तिथि हो र त्यो दिनभर अर्को सूर्योदय नभएसम्मका लागि द्वादशी भनिन्छ । कुनै खास काम गर्नु परेमा भने जुन खास समय चाहिएको हो सोही समयको डिग्री गणना गरी तिथि निर्धारण गरिन्छ । त्यही बुधबार दिउसो ४ बजे जन्म भएको बच्चाको जन्म तिथी भने जन्मदाका बेला १४४ डिग्रिभन्दा बढी भैसकेकाले त्रयोदशी हुन्छ ।

एक सूर्योदय र अर्को सूर्योदयका बिचमा यही १२ ले भाग जाने पूरै अंश अटेमा तिथि क्षय हुने हो, तिथी नै हराउने होइन । त्यसै गरी १२ डिग्रिको यही टुक्रोभित्र दोश्रो सूर्योदय भएमा तिथि दोहोरिने हो, तिथि नै थपिने पनि होइन ।

एक दिनमा सूर्यबाट चन्द्रको दूरी १२ डिग्रीले फरक पर्दै जाँदा ३० दिन अर्थात ३० तिथिमा ३६० डिग्री पूरा भइ सूर्य र चन्द्र एकै स्थानमा आइपुग्दछन्। यसलाई चान्द्रमास भनिन्छ। सूर्य सिद्धान्तमा एक चान्द्रमासलाई पित्रिको एक दिन मानिएको छ। सूर्य र चन्द्र एकै स्थानमा हुँदा अर्थात औंशीका दिन पितृ अहोरात्रको मध्यान्ह र पूर्णिमाका दिन मध्यरात्री भएको मानिएको छ। त्यसकारण पितृलोकको दिउसो पर्ने हुनाले कृष्ण पक्षमा पितृकर्म श्राद्ध गर्ने चलन छ।

## करण

तिथीको आधा भागलाई करण भनिन्छ। यसको अर्थ सूर्य र चन्द्र दुवैलाई पृथ्वीबाट हेर्दा ६ डिग्रिको अन्तर पर्न लाग्ने समय करण हो। तिथि जस्तो करण क्रमानुसार बढ्दैन। एघार करणमध्ये चार स्थिर र सात परिवर्तित छन्। यही एघार, स्थिर र परिवर्तित करणका विभिन्न संयोजनले पात्रोमा धेरै संयोजन बनेका हुन्छन्। यी संयोजन नै धार्मिक, सांस्कृतिक र लोक व्यवहारको उपयोगमा आउँछन्।

बव, बालव, कौलव, तैतिल, गर, वणिज, विष्टि, चतुष्पद, शकुनि, नाग, किंष्तुघ्न गरी एघार करण हुन्छन्। पछिल्ला चार करण तोकिएकै तिथिमा हुन्छन्। औंशीको ठीक अघिल्लो देखि ठिक पछिल्लो सम्मका करण तोकिएकै समयमा हुन्छन्। बाकी अर्धतिथिमा बाँकी सात करण क्रमानुसार हुन्छन्। अर्को शव्दमा कृष्ण पक्षको चतुर्दशीको पछिल्लो करण शकुनि, औंशीको पहिलो चतुष्पाद र दोश्रो नाग, शुक्ल प्रतिपदाको पहिलो किस्तुघ्न करण हुन्छ। त्यस पछि क्रमसः बव, बालव, कौलव, तैतिल, गर, वणिज, विष्टि, बव, बालव, कौलव घुमिरन्छन् कृष्णपक्षको चतुर्दशी नआउन्जेल।

विष्टि करणलाई पात्रोमा महत्व दिएको शुरु र अन्त मिति खुलाएर व्याख्या गरिएको हुन्छ तर भद्राको नाममा। व्याख्या खण्डमा जहाँजहाँ भ वा भद्रा लेखिएको हुन्छ त्यो विष्टि करणको अवधी हो।

सामान्यतः एक दिनमा तीन करण हुन्छन्। तिथी दोहोरिएका दिन दुई करण र तिथी क्षय भएका दिन चाँही चार करण एकै दिन परेका हुन्छन्।

पात्रोमा करण समाप्तिको समय लेखिन्छ। तर समय लेख्दा तिथीको पहिलो करण समाप्ति तिथिसङ्गै सकिने हुनाले नाम र करण समाप्ति दुवै लेखिएको हुदैन। दोश्रो करणको मात्र नाम र

समाप्ति समय लेखिएको हुन्छ । करण नै टुटेको बेला भने दोश्रो करणको ठीक मुनि साना अक्षरमा समाप्ति समय लेखिएको हुन्छ ।

## एकादशीका नाम

| | शुक्लपक्ष एकादशी | कृष्णपक्ष एकादशी |
|---|---|---|
| चैत्र | कामदा | वरूथिनी |
| वैशाख | मोहिनी | अपरा |
| ज्येष्ठ | निर्जला | योगिनी |
| आषाढ | हरिशयनी | कामिका |
| श्रावण | पुत्रदा | अजा |
| भाद्र | हरिपरिवर्तिनी | इंदिरा |
| आश्विन | पापांकुशा | रमा |
| कार्तिक | हरिबोधिनी | उत्पन्ना |
| मंशिर | मोक्षदा | सफला |
| पौष | पुत्रदा | षटतिला |
| माघ | जया | विजया |
| फाल्गुन | आमलकी | पापमोचिनी |
| अधिक मास | पद्मिनी | परमा |

# पाँचौं भागः नक्षत्रका कुरा

## नक्षत्र अवधारणा

आकाशमा देखिने तारालाई नक्षत्र भनिन्छ । ज्योतिषमा मध्ये आकासमा रहेका र परस्पर झण्डै समान दूरीमा रहने २७ तारालाई नक्षत्र मानेर पञ्चाङ्गको एक मूख्य भाग मानिएको छ । ग्रह कक्षका यी सत्ताइस नक्षत्र प्रत्येक १३ डिग्री २० मिनेटमा रहेको मानिन्छ । ग्रहहरु यी नक्षत्रकै आसपास हिडेको देखिए पनि नक्षत्रको खास अर्थ चाँही चन्द्रमाको कक्ष र चन्द्रमाको अवस्थितिसङ्ग रहन्छ (लोक व्यवहारमा नभए पनि गणितीय कार्यमा चाँही सूर्य नक्षत्रको पनि प्रयोग गरिन्छ) । शुन्य डिग्री भनेको अश्विनी नक्षत्रको शुरु विन्दु हो । ग्रह कक्षमा रहेका यी सत्ताइस तारा (नक्षत्र) को नाम यस प्रकार छः अश्वनी, भरणी, कृतिका, रोहिणी, मृगशिरा, आद्रा, पुर्नवशु, पुष्य (तिष्य), अष्लेषा, मघा, पुर्वफाल्गुणी, उत्तरफाल्गुणी, हस्ता, चित्रा, स्वाती, विशाखा, अनुराधा, जेष्ठा, मुल, पुर्वषाढा, उत्तरषाढा, श्रवण, धनिष्ठा, शतभिषा, पुर्वभाद्रपद, उत्तरभाद्रपद, रेवती ।

नेपाली पात्रोको मूख्य आधार सूर्य सिद्धान्तमा यी ताराहरुको अवस्थितिको परिकल्पना आजभोलीको विज्ञानले पत्ता लगाएभन्दा अनौठो छ ।

सूर्य सिद्धान्त अनुसार यी नक्षत्रहरु पृथ्वीबाट समान दूरी प्रत्येक १३ डिग्री २० मिनेटको क्षेत्रमा प्रभाव रहने गरी आकाशमा रहेको मानिएको छ । पृथ्वीबाट यी ताराहरुको दूरी पृथ्वीदेखी सूर्यको दूरीको ६० गुणा मानिएको छ । नक्षत्र कक्षको परिधी २५,९८,९०,०१२ योजन मानिएको छ । पूरा आकाशगंगाको परिधी चाँही १८,७१,२०,८०,८८४ लाख योजन मानिएको छ ।

यस हिसावले एक नक्षत्रको भागमा आकाशको १,९४,९१,७५१ योजन (परस्पर विवाद भएता पनि १ योजन भनेको ८ माइल जति हुन्छ) जति पर्न आउँछ ।

## नक्षत्रका पाउ

नक्षत्रको क्षेत्र १३ डिग्री २० मिनेटको ४ भागको एक भागलाई एक पाउ भन्ने गरिएको छ । यस हिसावले ग्रह कक्षको ३ डिग्री २० मिनेट (४८,७२,९३८ योजन) पर्न आउँछ ।

## अभिजित नक्षत्र

उत्तरषाढा नक्षत्रको अन्तिम पाउ र श्रवण नक्षत्रको १५ भागको १ भाग दूरी मानिएको चम्कलो तारालाई पनि नक्षत्र चक्रमा समावेश गर्ने गरिन्छ, केही प्रयोजनमा। सत्ताइस तारा समूहभन्दा फरक यो तारालाई ज्योतिषमा अभिजित नक्षत्र भन्ने गरिएको छ ।

## पञ्चाङ्गको अङ्ग

नक्षत्र पञ्चाङ्गका पाँचमध्येको एक अङ्ग हो। पञ्चाङ्गमा चन्द्रमा कुन नक्षत्रमा छ भनेर प्रत्येक नक्षत्रको अन्तिम विन्दुमा चन्द्रमा पुग्ने समय दिएको हुन्छ। सूर्योदयमा रहेको नक्षत्रलाई चाँही दिनभर त्यही नामले जनाउँने गरिन्छ ।

उदाहरणका लागि पञ्चाङ्गमा नक्षत्रका लागि शनिवार कृ ३७।९ २१:१ लेखिएको रहेछ भने त्यो दिनको सूर्योदय भए पछिको ३७ घडि ९ पला पछाडि अर्थात राती ९ बजेर १ मिनेटमा कृतिका नक्षत्रको समाप्ति हुन्छ र त्यसपछि रोहिणी नक्षत्रको क्षेत्रमा चन्द्रमा प्रवेश गर्दछ।आइतवार रो ४३।४० २३:३८ लेखिएको रहेछ भने आइतबारको सूर्योदय पछिको ४३ घडि ४० मिनेट अर्थात राती ११ बजेर ३८ मिनेटसम्म रोहिणी नक्षत्र रहन्छ। त्यसपछि चन्द्रमा मृगशिरा नक्षत्रमा प्रवेश गर्दछ ।

यस हिसाबले शनिबार राती ९ बजेर १ मिनेट देखि आइतबार राती ११ बजेर ३८ मिनेटसम्म रोहिणी नक्षत्रको अवधी २६ घण्टा ३७ मिनेट हुन्छ। यसको चार भाग लगाउँदा ६ घण्टा ३९ मिनेटको एक पाउ हुन्छ। त्यस हिसाबलेः

शनिवार राती ९:०१ बजे देखि विहान ३:३८ बजे सम्म पहिलो पाउ

त्यसपछिको ३:३८ बजे देखि आइतबार विहानको १०:१७ बजे सम्म दोश्रो पाउ

त्यसपछिको आइतबार विहानको १०:१७ बजे देखि अपरान्ह ४:५६ बजे सम्म तेश्रो पाउ

अन्तिम आइतबारको अपरान्ह ४:५६ बजेदेखि राती ११:३८ सम्म चौथो पाउ कायम रहन्छ ।

## होडा चक्र

नक्षत्रको सांस्कृतिक र जनजीवनमा प्रयोग हुन्छः नामाकरणका लागि । पात्रोमा शुरुतिरै होडा चक्र नाम गरेको एक तालिका दिएको हुन्छ । कुनै नवजात शिशुको जन्म समयको नक्षत्र र त्यसको पाउका आधारमा उसको नामाकरणको पहिलो अक्षर पत्ता लाग्दछ । यस्तो नामाकरणको पहिलो अक्षर पत्ता लगाउने गरी नक्षत्र र त्यसका चार पाउ खुलाएको चक्रलाई होडा चक्र भनिन्छ ।

माथिकै उदाहरणमा मानौं कुनै नवजात शिशुको जन्म आइतबार अपरान्ह ३:०० बजे भयो भने त्यो जन्मका समयमा चन्द्र नक्षत्र रोहिणी र त्यसको तेश्रो पाउ पर्दछ । होडा चक्रमा रोहिणी नक्षत्रका लागि चरणागत नामाक्षर भनेर ओ वा वि वु दिएको छ । तेश्रो पाउका लागि तेश्रो अक्षर वि लिइन्छ । त्यसकारण नामाकरण गर्ने व्यक्तिले सो बालकको नाम वि अक्षरबाट शुरु हुने कुनै शव्द चयन गर्दछ ।

होडाचक्रको लोकजीवनमा प्रयोग हुने एवं ज्योतिष गणनासङ्ग तादम्यता भएका पनि कसरी र कहिलेदेखि यसको विकास भयो, यसको वैज्ञानिक आधार के छ भन्ने जान्न सकिएको छैन । यसको उपभागहरु विभाजन गर्दा एउटा वर्गिकरणमा ब्राम्हण क्षेत्री वैश्य शुद्र छुट्याएकाले समाजमा जातिपातीको व्यवस्थाको क्रममा यो चक्र बनाए जस्तो देखिन्छ । जे भए पनि तपाई हामी सबैका नाम चाँही यसै चक्रबाट लिइन्छ । बीस तीस वर्ष अगाडिसम्मका नाम पूरै होडाचक्रमा आधारित हुन्थे भने अहिलेका नाम चाँही धार्मिक सांस्कृतिक कार्यका लागि होडाचक्रबाट र सरकारी कामका लागि आफूखुशि राख्ने प्रचलन बढ्दो छ ।

## गण्डमूल र गण्डान्त नक्षत्र

वृतको १२ भागको १ भागलाई रासी भनिन्छ । त्यसकारण वृताकार ग्रह कक्षको १२ भागको १ भाग अर्थात प्रत्येक ३० डिग्रीलाई रासी भनिन्छ । यी १२ रासी शुरु हुने नक्षत्रलाई गण्डमूल

नक्षत्र र अन्तहुने नक्षत्रलाई गण्डान्त नक्षत्र भनिन्छ । अश्विनी मघा ज्येष्ठा मूल अश्लेषा रेवती नाम गरेका छ नक्षत्रले रासीको शुरु वा अन्त गरेका हुन्छन् ।

## राशि

वृतको १२ भागको १ भाग अर्थात ३० डिग्रीलाई राशि भनिन्छ । राशि शव्दको खास वर्गिकरण सूर्य गतिसङ्ग सम्बन्धित हुन्छ । उदाहरणका लागि आकाशमा हेर्दा सूर्यले पहिलो ३० डिग्री पार गर्ने स्थान र समय मेष राशि (बैसाख) हुन्छ । यो अवधी ३०.९५ जति दिन हुन्छ (त्यसकारण बैसाख महिना ३१ गतेसम्म हुन्छ) । आकाशमा हेर्दा सूर्यले ३० डिग्रीदेखि ६० डिग्री पार गर्ने स्थान र समय वृष राशि (जेष्ठ) हुन्छ ।

चन्द्र र अन्य ग्रहको अवस्थित पनि राशि, अंशमा छुट्याएर राखिन्छ । यस्तो वर्गिकरणबारे लग्नको कुरा गर्दा विस्तृत छलफल गरौंला ।

माथि नै भनि सकियो वृतको २७ भाग नक्षत्र हुन्छ भनेर । त्यसैले नक्षत्र र राशिको प्रत्यक्ष सम्बन्ध हुन्छ । एक नक्षत्रले १३ डिग्री २० मिनेटको क्षेत्र ओगट्ने हुनाले १ राशिमा २ नक्षत्र र १ पाउ हुन्छ । यसरी राशि, नक्षत्र र पाउको सम्बन्ध स्थापित हुन्छ ।

## संक्रान्ति

सूर्य एक राशिबाट अर्को राशिमा सर्ने विन्दुलाई संक्रान्ति भनिन्छ । सूर्य ० डिग्रिमा पुग्ने विन्दुलाई मेष (बैसाख) संक्रान्ति भनिन्छ । सूर्य ३० डिग्रि सकिएर अगाडि बढ्ने विन्दु वृष (जेष्ठ) संक्रान्ति हो ।

दिन रात बराबर हुने गरी वर्षका दुई संक्रान्तिका विन्दुहरु अर्थात मेषको शुरु विन्दु (मेषादी अर्थात बैसाख) र तुलादी (कार्तिक) को संक्रान्तिलाई विषुवत् संक्रान्ति भनिन्छ ।

दिन वा रात सबैभन्दा लामो हुने र सूर्य उत्तर वा दक्षिण फर्कने गरी वर्षका दुई संक्रान्तिका विन्दुहरु अर्थात कर्कटादी (श्रावण) र मकरादी (माघ) को संक्रान्तिलाई अयन संक्रान्ति भनिन्छ ।

जेष्ठ, भाद्र, मंशिर र फागुनका संक्रान्तिलाई विष्णुपदी संक्रान्ति भनिन्छ । आषाढ, असोज, पुस र चैत्र संक्रान्तिलाई षडतिला संक्रान्ति भनिन्छ ।

सूर्यले कुन विन्दु पार गर्दा संक्रान्ति भन्ने कुरा जति भन्न र बुझ्न सजिलो छ, वास्तवमा गम्भिर समिक्षा गर्दा त्यो भन्दा फरक देखा पर्दछ । सूर्य मार्गको ०°, ३० °, ६० °, ९० °, १२० ° आदिमा सूर्य पुग्नु संक्रान्ति हो । तर सूर्यको पहिलो घेरा वा सूर्यको मध्ये केन्द्र वा सूर्यको तल्लो घेरा पार गर्नु पर्ने तय गर्नु पर्दछ । वास्तवमा सूर्यको मध्ये केन्द्र यी विन्दुमा पर्ने समय र स्थान संक्रान्ति हो । तर सूर्य स्वयंमा औषतमा ३२ कला आकारको हुन्छ । एक दिनमा सूर्यले झण्डै १ डिग्री दूरी पार गर्दछ । सूर्यको माथिल्लो घेरा कुनै विन्दुमा प्रवेश गरेदेखि पूरै सूर्य त्यो विन्दु पार गर्न झण्डै आधा दिन (१६ घडी) समय लाग्दछ । त्यसकारण संक्रान्ति ०°, ३०°, ६०°, ९० °, १२० ° आदिमा सूर्यको केन्द्र परेको समय विन्दु मानिएता पनि सूर्यले यो विन्दु छुने अघिल्लो १६ घडिदेखि संक्रान्तिको १६ घडिसम्मको अवधिलाई संक्रान्तिको पूण्यकाल मानिन्छ ।

# छैटौं भागः पुराणका कुरा

## युगादी

सूर्य सिद्धान्त अनुसार महायुगमा सत्य, त्रेता, द्वापर र कलि चार युग हुन्छन्। पुराण साहित्यमा पनि यी नाम प्रचलित भएकाले यी नामको सांस्कृतिक महत्व पनि छ। यी युग शुरु भएको चान्द्र तिथिलाई पात्रोमा युगादी भनिएको हुन्छ। चार युगका शुरुवातका दिन यी हुनः

| | |
|---|---|
| सत्ययुग | कार्तिक शुक्ल नवमी |
| त्रेता | बैसाख शुक्ल त्रितीया |
| द्वापर | माघ औंशी |
| कली | भाद्र कृष्ण त्रयोदशी |

ज्योतिष गणनामा मध्यमाधिकार र स्पष्टाधिकार दुई तह हुन्छन्। मध्यमाधिकारमा ग्रह कक्ष वृत्ताकार मानिन्छ र अङ्कहरु औषतमा लिइन्छन्। स्पष्टाधिकारमा चाँही वास्तविक ग्रहकक्ष अण्डवृताकार भएकाले वृत्ताकार गणनाको फरक (मन्दफल र शिघ्रफल) थपघट गरी आकाशमा ग्रहको वास्तविक अवस्थिति पत्ता लगाइन्छ। पञ्चाङ्ग गणना स्पष्ट ग्रहबाट मात्र गरिन्छ। मध्यमाधिकार अनुसार माथि भनिएका युगको शुरुवात चैत्र शुक्ल प्रतिपदा र बैसाख १ गते नै हुन्छ, माथि दिएको मितिमा हुदैन। यो मिति र मध्यमाधिकारको आधारको मितिमा कसरी तादम्यता राख्दछ पङ्क्तिकारले बुझ्न सकेको छैन। यी मिति ज्योतिष गणनामा आधारित नभएर

केवल पुराणमा आधारित हुनु सम्भव छ । अर्को सम्भावना पुराणमा भनिएको वास्तविक कुरा र व्यवहारमा लिइने[†] पुराणका कुरामा हुने फरकता जस्तै यो फरकता पनि हुन सक्दछ ।

## मन्वादी

युगादीको जस्तै मन्वादीको पनि पुराणसङ्ग सम्बन्ध देखिन्छ, स्वयं ज्योतिष गणनासङ्ग यसको व्याख्या अलि मिल्दैन । मनु १४ वटा हुन्छन् । ती मनुको कार्यकाल शुरु भएको दिनलाई मन्वादी भनिन्छ । पात्रोमा तलका दिनहरुलाई मन्वादी लेखिएको हुन्छः

| | |
|---|---|
| स्वायम्भुव मन्वादि | चैत्र, शुक्ल तृतीया |
| स्वारोचिष मन्वादि | चैत्र, शुक्ल पूर्णिमा |
| उत्तम मन्वादि | कार्तिक, शुक्ल पूर्णिमा |
| तामस मन्वादि | कार्तिक, शुक्ल द्वादशी |
| रैवत मन्वादि | आषाढ़, शुक्ल दशमी |
| वैवस्वत मन्वादि | ज्येष्ठ, शुक्ल पूर्णिमा |
| चाक्षुष मन्वादि | आषाढ़, शुक्ल पूर्णिमा |
| धर्म सावर्णि मन्वादि | पौष, शुक्ल एकादशी |
| ब्रह्म सावर्णि मन्वादि | माघ, शुक्ल सप्तमी |
| सावर्णि मन्वादि | फाल्गुन, शुक्ल पूर्णिमा |
| इन्द्र सावर्णि मन्वादि | भाद्रपद, कृष्ण अष्टमी |
| दैव सावर्णि मन्वादि | भाद्रपद, कृष्ण अमावस्या |
| रूद्र सावर्णि मन्वादि | भाद्रपद, शुक्ल तृतीया |
| दक्ष सावर्णि मन्वादि | आश्विन, शुक्ल नवमी |
| धर्म सावर्णि मन्वादि | पौष, शुक्ल एकादशी |

[†] कल्की अवतार कलीयुगको अन्त्यमा हुन्छ र अहिले कलिको शुरु संध्या मात्र शुरु भएको हो । त्यसकारण कल्की अवतार सुदुर भविष्यमा हुने व्यवहारिक ज्ञान धेरैमा छ । तर कल्की पुराण स्वयंमा चाँही कल्कीको जन्म भैसकेको तरीकाले भुतकालमा लेखिएको छ ।

## सातौं भागः सजीव इतिहासका कुरा (१)

जानकारी

नेपाली पात्रो नेपाली संस्कृतिको संक्षिप्त तर वृहद सजीव इतिहास रहेछ। यसले नेपालका विभिन्न भागका इतिहास संग्रह गरेको रहेछ। यसमा दिएका जात्रा, पर्व, जयन्ति जस्ता इतिहास, संस्कृति र राजनैतिक अवस्थाबारे विभिन्न राज्य उपराज्यको इतिहास बोकेको रहेछ। किम्बदन्ति र कथाहरुको विषय सूचि रहेछ। समाजको प्राणवायु र समुदायको पहिचानका यी सजीव इतिहास क्रमसः खोजी गर्दै 'सजीव इतिहासका कुरा' श्रेणीवद्ध रुपमा प्रकाशन गरिने छ। यसमा सम्बन्धित समुदाय, ती समुदायका प्रमूख व्यक्तित्वलाई आफ्ना संस्कृतिका कुरा, किंवदन्तिका कुरा वा पर्वका कुरा प्रकाशन नै गरेर वा यो श्रेणीमा प्रकासन गर्न पठाउनु भएर सहयोग गर्न अनुरोध छ।

सजीव इतिहासका कुरामा यो श्रेणीमा चाँही २०७८ चैत्र शुल्क प्रतिपदा (२०७७ चैत्र ३१) देखि २०७८ बैसाख १ सम्मका सजीव इतिहासको सूचि दिइन्छ ।

### तिथीमा आधारित पर्व

चैत्र शुक्ल प्रतिपदाका दिनका पर्वहरुः

१. सम्वत्सर आरम्भ, शक सम्वत् नयाँ वर्ष, विक्रम सम्वत्को चान्द्रमास प्रारम्भ
२. वृहस्पति संवत् आरम्भ
३. आदिनाथ लोकेश्वरको स्नान गराउने दिन
४. भद्रकाली पीठमा लिङ्गो लडाउने दिनः गुठियारबाट (कुन गुठियार र कहिलेदेखिको पर्व खोजी हुन बाँकी)

चैत्र शुक्ल द्वितीयाका दिनका पर्वहरुः

५. थारुजुर सितल (सिरुवापावनी) पर्व (समितिको पात्रोमा यो छैन, २०७८ सालमा बैसाख २ गते ५ जिल्लामा विदा दिएको चाँही छ)
६. चम्पादेवी (काठमाण्डौ) मेला (कुन गुठियार र कहिलेदेखिको पर्व खोजी हुन बाँकी)

## सौरमासमा आधारित पर्व

बैसाख संक्रान्तिका दिनका पर्वः

१. विक्रम सम्वत्, मैथली सम्वत, बङ्गला सम्वत्को नववर्ष शुरु
२. टोखा सपनतिर्थमा मेला (कहिलेदेखिको पर्व खोजी हुन बाँकी)
३. टोखा सपन चण्डेश्वरी यात्रा(कुन गुठियार र कहिलेदेखिको पर्व खोजी हुन बाँकी)
४. भक्तपुर विश्वध्वजपातन (विस्केटको लिङ्गो लडाउने) पर्व (कम्तिमा यक्ष मल्लको पालाको आसपास वा त्यो अगाडि तर कति अघिदेखिको पर्व खोजी हुन बाँकी)
५. मत्यनारायण (मच्छेगाउँ काठमाण्डौ) मेला (कोही राजा भएको वा शक्तिशाली सामन्तको राज्य हुनु पर्ने तर को र कहिलेदेखिको पर्व खोजी हुन बाँकी)
६. सुदुर पश्चिममा सालीभिनाले सिस्नुपानी लगाउने विशुपर्व (समितिको पात्रोमा यो छैन)
७. मैथली समुदायमध्येको तरुवा, वरी, दही, आँपको टिकोलाको चटनी र सातु खाने पर्व (समितिको पात्रोमा यो छैन)

क्रमसः